# नेपाल फार्मेसी परिषद नियमावली, २०५९

श्री ५ को सरकारबाट स्वीकृत मिति :

२०५९।४।२१

नेपाल फार्मेसी परिषद ऐन, २०५७ को दफा ३६ ले दिएको अधिकार प्रयोग गरी नेपाल फार्मेसी परिषदले देहायका नियमहरु बनाएको छ।

## परिच्छेद - १

## प्रारम्भिक

१.१ **संक्षिप्त नाम र प्रारम्भ** : (१) यी नियमहरुको नाम नेपाल फार्मेसी परिषद नियमावली, २०५९" रहेको छ।

(२) यो नियमावली तुरुन्त प्रारम्भ हुनेछ।

१.२ **परिभाषा** : विषय वा प्रसङ्गले अर्को अर्थ नलागेमा यस नियमावलीमा,-

(क) "ऐन" भन्नाले नेपाल फार्मेसी परिषद ऐन, २०५७ सम्झनु पर्छ।

(ख) "फार्मेसी व्यवसायी" भन्नाले फर्मासिष्ट वा फार्मेसी सहायक सम्झनु पर्छ।

(ग) "संस्था" भन्नाले शिक्षण संस्था वा फार्मेसी व्यवसाय सम्बन्धी कुनै संस्था सम्झनु पर्छ र सो शब्दले फार्मेसी सेवा उपलब्ध गराउने जुनसुकै प्रकारको संस्थालाई समेत जनाउँछ।

(घ) "शिक्षण संस्था" भन्नाले फार्मेसी (औषधि विज्ञान) सम्बन्धी विषय अध्यापन गर्ने, गराउने वा तालिम दिने, दिलाउने उद्देश्यले स्थापना भएका शिक्षण वा प्रशिक्षण संस्था सम्झनु पर्छ र सो शब्दले त्यस प्रयोजनका लागि जुनसुकै नामले स्थापना भएका फार्मेसी सम्बन्धी शिक्षण वा प्रशिक्षण संस्था सम्झनु पर्छ।

(ङ) "कर्मचारी" भन्नाले परिषदको सेवामा काम गर्ने कर्मचारी सम्झनु पर्छ।

## परिच्छेद - २

## **नाम दर्ता सम्बन्धी व्यवस्था**

२.१ **नाम दर्ता तथा पुनः नाम दर्ता दस्तुर** : (१) परिषदमा फार्मेसी व्यवसायीको नाम दर्ता गर्नको लागि अनुसूची-१ मा तोके बमोजिमको दस्तुर बुझाउनु पर्नेछ ।

(२) परिषदमा नाम दर्ता भई एनेको दफा १८ को उपदफा (१) को खण्ड (क), (ख) वा (ग) बमोजिम परिषदको दर्ता किताबबाट नाम हटेकोमा पुनः नाम दर्ता गर्नको लागि शुरु नाम दर्ता दस्तुर सरहको दर्ता दस्तुर बुझाउनु पर्नेछ ।

२.२ **नाम दर्ताको लागि दरखास्त दिने** : (१) फार्मेसी व्यवसाय गर्नको लागि दर्ता किताबमा आफ्नो नाम दर्ता गराउन चाहने फार्मेसी व्यवसायीले अनुसूची - २ बमोजिमको ढाँचामा परिषदमा दरखास्त दिनु पर्नेछ ।

(२) उपनियम (१) बमोजिम दरखास्त दिँदा फार्मेसी व्यवसायीले आफ्नो शैक्षिक योग्यता वा उपाधि तथा त्यस्तो शैक्षिक योग्यता वा उपाधिको सम्बन्धमा आधिकारिक निकायबाट दिइएको कागजात, नियम २.१ बमोजिम निर्धारित नाम दर्ता दस्तुर, अनुसूची - ३ बमोजिमको प्रतिज्ञापत्र र परिषदले तोकेको अन्य कागजातका अतिरिक्त नेपाली नागरिक भए नेपाली नागरिकताको प्रमाणपत्र र गैर नेपाली नागरिक भए राहदानी वा निजको परिचय जनिने गरी सरकारी निकायबाट जारी भएको परिचयपत्र तथा निजले जुन संस्थामा काम गर्न चाहेको हो सो को प्रमुखले निजले सो संस्थामा काम गर्नुपर्ने कारण, अवधि आदि खुलाई निजको नाम दर्ताको लागि गरिदिएको सिफारिशपत्र समेत संलग्न गर्नुपर्नेछ ।

२.३ **दरखास्त उपर जाँचबुझ, छानविन र सिफारिशको अवधि** : दरखास्तवालाबाट नाम दर्ताको लागि प्राप्त हुन आएको दरखास्त उपर रजिष्ट्रारले जाँचबुझ गर्ने र सम्बन्धित विषय समितिले छानविन तथा परिषदमा सिफाशि गर्ने कुल अवधि सामान्यतया बढीमा तीन महिनाको हुनेछ ।

२.४ **नाम दर्ताको निर्णय, दर्ता नवीकरण र दर्ता किताब** : (१) ऐनको दफा १५ बमोजिम परिषदले नाम दर्ता गर्ने निर्णय गरेको फार्मेसी व्यवसायीको नाम रजिष्ट्रारले अनुसूची-४ बमोजिमको ढाँचाको दर्ता किताबमा दर्ता गरी त्यस्तो फार्मेसी व्यवसायीलाई अनुसूची-५ बमोजिमको ढाँचामा नाम दर्ता प्रमाणपत्र दिनेछ ।

(२) कुनै गैर नेपाली फार्मेसी व्यवसायीले नेपाल अधिराज्यभित्रको कुनै संस्थामा फार्मेसी व्यवसाय गर्नको लागि दर्ता किताबमा आफ्नो नाम दर्ता गराउनु पर्नेछ ।

(३) गैर नेपाली फार्मेसी व्यवसायीले परिषदले तोकेको अवधिभर परिषदले तोकेको हदसम्मको मात्र फार्मेसी व्यवसाय गर्न पाउनेछ ।

(४) उपनियम (२) बमोजिम गैर नेपाली फार्मेसी व्यवसायीको नाम दर्ता गर्दा नेपाल अधिराज्यमा बढीमा दुई वर्षको लागि फार्मेसी व्यवसाय गर्न पाउने गरी परिषदमा नाम दर्ता गर्ने निर्णय गर्नु पर्नेछ ।

(५) उपनियम (४) बमोजिम अवधि तोकी नाम दर्ता गराएको गैर नेपाली फार्मेसी व्यवसायीले आफ्नो नाम दर्ताको नवीकरण गराउन चाहेमा निजको नाम दर्ताको अवधि समाप्त हुनुभन्दा कम्तीमा पैँतीस दिन अगावै दर्ता नवीकरणको लागि अनुसूची-१ मा ताकेबमोजिमको दस्तुर सहित परिषदमा दरखास्त दिनु पर्नेछ र त्यस्तो दरखास्त परेपछि परिषदले आवश्यक देखेमा एकपटकमा एक वर्षमा नबढ्ने गरी निजको नाम दर्ता नवीकरण गर्ने निर्णय गर्न सक्नेछ ।

(६) दर्तावाला गैर नेपाली फार्मेसी व्यवसायीको नाम दर्ताको म्याद समाप्त हुनुभन्दा पैँतीस दिन अगावै निजले दर्ता नवीकरणको लागि परिषद समक्ष दरखास्त नदिएमा वा नाम दर्ता वा दर्ता नवीकरणको म्याद समाप्त नभएकै अवस्थामा पनि निज कार्यरत संस्थामा निजको सेवा अवधि समाप्त भएमा वा निजले त्यस्तो संस्थामा काम गर्न छाडेमा निजको नाम दर्ता स्वतः खारेज भएको मानिनेछ ।

(७) उपनियम (६) बमोजिम दर्ता खारेज भएमा तिरिसकेको नाम दर्ता वा दर्ता नवीकरण दस्तुर फिर्ता हुनेछैन ।

(८) गैर नेपाली फार्मेसी व्यवसायीको नाम दर्ता र दर्ता नवीकरण सम्बन्धी अन्य व्यवस्था परिषदले तोके बमोजिम हुनेछ ।

२.५ **<u>नाम दर्ता नभएको जानकारी दिने</u>** : नाम दर्ताको लागि परिषदमा दिएको दरखास्त उपर कारवाही हुँदा परिषदले कुनै कारणवश त्यस्तो दरखास्तवालाको नाम दर्ता नगर्ने गरी निर्णय गरेमा रजिष्ट्रारले अनुसूची- ६ बमोजिमको ढाँचामा सम्बन्धित दरखास्तवालालाई सोको जानकारी दिनुपर्नेछ ।

२.६ **<u>दस्तुर फिर्ता नहुने</u>** : नियम २.५ बमोजिम परिषदले दर्ता किताबमा दरखास्तवालाको नाम दर्ता नगर्ने निर्णय गरेमा नाम दर्ताको लागि तिरिसकेको दस्तुर फिर्ता हुनेछैन ।

## परिच्छेद - ३

## व्यावसायिक आचारसंहिता सम्बन्धी व्यवस्था

३.१ **व्यावसायिक आचारसंहिता** : (१) ऐनको दफा ९ खण्ड (ङ) र दफा १८ को उपदफा (१) को खण्ड (ग) को प्रयोजनको लागि दर्तावाला फार्मेसी व्यवसायीले फार्मेसी व्यवसाय गर्दा पालना गर्नुपर्ने व्यावसायिक आचारसंहिता देहाय बमोजिम हुनेछ -

(क) व्यावसायिक ज्ञान र सीपको प्रयोग गर्दा धर्म, वर्ण, लिङ्ग र सामाजिक जातजाति वा अन्य कुनै पनि कुराको आधारमा कुनै पनि व्यक्ति उपर भेदभाव गर्नु हुँदैन ।

(ख) आफूले अध्ययन गरेको विषय वा हासिल गरेको ज्ञान र सीपसँग सम्बन्धित क्षेत्रभित्रको मात्र कार्य गर्नुपर्नेछ ।

(ग) सेवा बापत पाउने पारिश्रमिक, भत्ता तथा अन्य सुविधा बाहेक फार्मेसी सेवाको प्रचार प्रसार गरी कुनै किसिमको अनुचित आर्थिक लाभ प्राप्त गर्न वा फार्मेसी व्यवसायमा आँच आउने किसिमको कुनै अनुचित क्रियाकलाप गर्नु गराउनु हुँदैन ।

(घ) आफूले गर्नुपर्ने फार्मेसी व्यवसाय सम्बन्धी प्रत्येक काम व्यक्तिगत रुपमा उत्तरदायित्व लिने गरी गर्नुपर्नेछ ।

(ङ) दर्तावाला प्रत्येक फार्मेसी व्यवसायीले आफ्नो नाम अध्यावधि गराउनु पर्नेछ ।

(२) उपनियम (१) मा लेखिएदेखि बाहेक फार्मेसी व्यवसायीले पालना गर्नुपर्ने व्यावसायिक आचारसंहिता परिषदले समय-समयमा तोके बमोजिम हुनेछ ।

(३) व्यावसायिक आचारसंहिताको पालना गर्नु गराउनु सम्बन्धित सबैको कर्तव्य तथा जिम्मेवारी हुनेछ ।

३.२ **व्यावसायिक आचरण पालना नगरेको मानिने** : दर्तावाला फार्मेसी व्यवसायीले नियम ३.१ बमोजिम निर्धारित आचारसंहिताको पालन नगरेमा व्यावसायिक आचरण पालना नगरेको मानिनेछ ।

परिच्छेद - ४

## दर्ता किताबबाट नाम हटाउने, निलम्बन र पुनः नाम दर्ता सम्बन्धी कार्यविधि

४.१ **जाँचबुझ समिति** : दर्तावाला कुनै फार्मेसी व्यवसायीले नियम ३.१ बमोजिमको व्यावसायिक आचरण पालना नगरेको वा ऐनको दफा १८ को उपदफा १ को खण्ड (ङ) बमोजिम दर्ता किताबमा नाम दर्ता गराएको भन्ने कुरा कुनै माध्यमबाट परिषदलाई जानकारी हुन आएमा परिषदले सो सम्बन्धमा आवश्यक जाँचबुझ गरी प्रतिवेदन पेश गर्न परिषदको कुनै एक सदस्यको संयोजकत्वमा एक वा तीन सदस्यीय जाँचबुझ समिति गठन गर्नेछ ।

४.२ **बयान गराउने तथा सबुत प्रमाण पेश गर्न लगाउने** : व्यावसायिक आचरण पालना नगरेको वा ऐनको दफा १८ को उपदफा (१) को खण्ड (ङ) बमोजिम नाम दर्ता गराएको आरोप लागेको व्यक्तिलाई जाँचबुझ समितिले बयान गराउन र निज उपर लागेको आरोपको विरुद्ध सबुत प्रमाणहरु पेश गर्न लगाउन सक्नेछ ।

४.३ **सफाई पेश गर्ने मौका दिनुपर्ने** : (१) व्यावसायिक आचरण पालना नगरेको वा ऐनको दफा १८ को उपदफा (१) को खण्ड (ङ) बमोजिम नाम दर्ता गराएको आरोप लागेको व्यक्ति उपर छानविनको क्रममा जाँचबुझ समितिले त्यस्तो व्यक्तिलाई कारबाही गर्न लागेको कारण उल्लेख गरी सो सम्बन्धमा आफ्नो सफाई पेश गर्न कम्तीमा पैंतीस दिनको म्याद दिनु पर्नेछ ।

(२) उपनियम (१) बमोजिम सफाई पेश गर्न मौका दिँदा निज उपर लगाइएको आरोप स्पष्ट रुपले किटिउको र प्रत्येक आरोप कुनकुन कुरा र कारणमा आधारित छ सो समेत खुलाउनु पर्नेछ ।

(३) उपनियम (१) बमोजिम सफाई पेश गर्ने मौका दिइएकोमा सम्बन्धित व्यक्तिले पनि म्यादभित्रै आफ्नो सफाई पेश गर्नुपर्नेछ ।

४.४ **निलम्बन गर्न सक्ने** : (१) व्यावसायिक आचरण पालना नगरेको वा ऐनको दफा १८ को उपदफा (१) को खण्ड (ङ) बमोजिम नाम दर्ता गराएको आरोप लागेको व्यक्तिलाई जाँचबुझ समितिले जाँचबुझ प्रारम्भ भएको मितिदेखि दर्तावाला फर्मासिष्ट वा फार्मेसी सहायकबाट निलम्बन गर्न सक्नेछ ।

तर देहायका अवस्था नभई सामान्यतया निलम्बन गरिने छैन -

(क) निलम्बन नगरी फार्मेसी व्यवसाय गर्न दिँदा झुठा सबुद प्रमाण संकलन गर्न सक्ने वा आफ्नो विरुद्धको सबुद प्रमाण गायब गर्न सक्ने सम्भावना देखिएमा, वा

(ख) निलम्बन नगरी फार्मेसी व्यवसाय गर्न दिँदा सो व्यवसाय वा उपभोक्तालाई हानि नोक्सानी पुऱ्याउने सम्भावना देखिएमा ।

(२) उपनियम (१) बमोजिम कुनै फार्मेसी व्यवसायीलाई निलम्बन गर्दा सामान्यतया दुई महिनाभन्दा बढी अवधिको लागि निलम्बन गर्नु हुँदैन । सो अवधिभित्रै निज उपर लगाइएको आरोपको सम्बन्धमा कारबाही किनारा लगाई सक्नुपर्नेछ । कुनै असाधारण अवस्था परी उक्त अवधिभित्र कारबाही किनारा लगाउन नसकिने भई निलम्बनको अवधि बढाउनु परेमा परिषदको पूर्व स्वीकृति लिई बढीमा एक महिनासम्मको लागि निलम्बनको अवधि बढाउन सकिनेछ ।

(३) उपनियम (१) बमोजिम निलम्बन गरिएको वा उपनियम (२) बमोजिम निलम्बनको अवधि बढाइएकोमा सो कुराको जानकारी सम्बन्धित फार्मेसी व्यवसायी र निज कुनै संस्थामा कार्यरत भए त्यस्तो संस्थालाई पनि दिनु पर्नेछ । त्यसरी कुनै फार्मेसी व्यवसायी निलम्बनमा राख्ने जानकारी प्राप्त भएपछि त्यस्तो संस्थाले पनि सम्बन्धित फार्मेसी व्यवसायीलाई आफ्नो संस्थाको सेवाबा निलम्बन गर्नु पर्नेछ ।

४.५ **स्पष्टीकरण पेश गर्ने मौका दिनुपर्ने** : (१) नियम ४.३ बमोजिम सफाई पेश गर्न दिइएको म्यादभित्र सफाई पेश नगरेमा वा पेश हुन आएको सफाई सन्तोषजनक नभएमा त्यस्तो व्यक्तिको नाम दर्ता किताबबाट किन नहटाउने भनी निजलाई त्यस समबन्धमा स्पष्टीकरण पेश गर्न कम्तीमा पन्ध्र दिनको म्याद दिनुपर्नेछ ।

(२) उपनियम (१) बमोजिम स्पष्टीकरण पेश गर्ने मौका दिएकोमा सम्बन्धित फार्मेसी व्यवसायीले पनि म्यादभित्रै स्पष्टीकरण पेश गर्नुपर्नेछ ।

४.६ **जाँचबुझ समितिको प्रतिवेदन** : (१) जाँचबुझ समितिले जाँचबुझको काम समाप्त गरेपछि परिषद समक्ष आफ्नो प्रतिवेदन पेश गर्नुपर्नेछ ।

(२) उपनियम (१) बमोजिम पेश गरिने प्रतिवेदनमा कुनै व्यक्तिको नाम दर्ता किताबबाट हटाउनु पर्ने वा नपर्ने कारण सहितको आफ्नो राय ठहरको साथै प्राप्त सबै सबुत प्रमाण सेमत संलग्न गर्नुपर्नेछ ।

४.७ **परिषदले निर्णय गर्ने** : नियम ४.६ बमोजिम जाँचबुझ समितिले पेश गरेको प्रतिवेदन परिषदले अध्ययन गर्दा मूलतः आरोप लागेको व्यक्तिलाई नियम ४.३ र ४.५ बमोजिम क्रमशः सफाई र स्पष्टीकरण पेश गर्न पर्याप्त मौका दिए नदिएको तथा निजले पेश गरेका सफाई, स्पष्टीकरण तथा सोसाथ संलग्न सबुत, प्रमाण र जाँचबुझ समितिले संकलन गरेको प्रमाणको वस्तुनिष्ठ मूल्याङ्कन तथा विश्लेषण गरे वा नगरेको कुरा समेतलाई विचार गरी आरोप लागेको व्यक्तिले आरोपित कसुर गरे वा नगरेको सम्बन्धमा उचित मूल्याङ्कन गरी स्पष्ट कारण खुलाई निर्णय गर्नुपर्नेछ।

४.८ **निर्णयको जानकारी** : व्यावसायिक आचरण पालना नगरेको वा ऐनको दफा १८ को उपदफा (१) को खण्ड (ङ) बमोजिम नाम दर्ता गराएको आरोपमा कुनै व्यक्तिको नाम परिषदको दर्ता किताबबाट हटाउने गरी नियम ४.७ बमोजिम परिषदले निर्णय गरेमा रजिष्ट्रारले त्यस्तो निर्णयको जानकारी सम्बन्धित व्यक्ति र निज कार्यरत संस्थालाई दिई सो सम्बन्धी सार्वजनिक सूचना समेत प्रकाशित गर्नु पर्नेछ।

४.९ **निलम्बनको समाप्ति** : व्यावसायिक आचरण पालना नगरेको वा ऐनको दफा १८ को उपदफा (१) को खण्ड (ङ) बमोजिम नाम दर्ता गराएको भनी कुनै व्यक्ति उपर लागेको आरोप नियम ४.७ बमोजिम परिषदबाट प्रमाणित भए वा नभएको अवस्थामा त्यस्तो व्यक्तिलाई नियम ४.४ बमोजिम निलम्बन गरेको भए त्यस्तो निलम्बन स्वतः समाप्त भएको मानिनेछ।

४.१ **पुनः नाम दर्ता** : ऐनको दफा २० को उपदफा (२) बमोजिम परिषदले कुनै फार्मेसी व्यवसायीको नाम पुनः दर्ता गर्ने निर्णय गरेमा रजिष्ट्रारले परिच्छेद- २ मा उल्लेखित कार्यविधि अपनाई निजको नाम दर्ता किताबमा पुनः दर्ता गरी सो को प्रमाणपत्र दिनेछ।

## परिच्छेद - ५

## अध्यक्ष, सदस्य तथा रजिष्ट्रार सम्बन्धी व्यवस्था

५.१ **अध्यक्षको काम, कर्तव्य र अधिकार** : (१) ऐनको दफा २५ मा लेखिएको काम, कर्तव्य र अधिकारको अतिरिक्त परिषदको प्रमुखको हैसियतले गर्नु गराउनु पर्ने अन्य सम्पूर्ण कार्यहरु गर्ने गराउने काम, कर्तव्य र अधिकार अध्यक्षको हुनेछ।

५.२ **रजिष्ट्रारको काम, कर्तव्य र अधिकार** : ऐन तथा यस नियमावलीमा अन्यत्र उल्लेख भएको काम, कर्तव्य र अधिकारको अतिरिक्त रजिष्ट्रारको काम, कर्तव्य र अधिकार देहाय बमोजिमको हुनेछ -

(क) परिषदको प्रशासकीय प्रमुखको हैसियतमा रही आवश्यक सबै काम कारवाही गर्ने,

(ख) परिषदबाट स्वीकृत बजेट, योजना तथा कार्यक्रमको कार्यान्वयन गर्ने गराउने,

(ग) परिषदको कोषको जिम्मा लिने,

(घ) दर्ता किताब आफ्नो जिम्मामा राख्ने,

(ङ) परिषद र अध्यक्षले तोकेको, निर्देशन दिएको, प्रत्यायोजन गरेको तथा लगाए, अह्राए बमोजिमको अन्य कार्यहरु गर्ने ।

५.३ **रजिष्ट्रारको पारिश्रमिक** : परिषदले रजिष्ट्रारलाई अनुसूची- ७ मा तोकिए बमोजिमको पारिश्रमिक मासिक रुपमा दिनेछ ।

५.४ **बैठक भत्ता** : परिषदको अध्यक्ष, सदस्य, रजिष्ट्रार र विज्ञ तथा विषय समितिको अध्यक्ष, सदस्य, सदस्य-सचिव र विज्ञले पाउने बैठक भत्ता अनुसूची- ७ मा तोकिए बमोजिम हुनेछ ।

## परिच्छेद - ६

## परिषदको कर्मचारीको पद, दरबन्दी, श्रेणी, न्यूनतम योग्यता र पदपूर्ति सम्बन्धी व्यवस्था

६.१ **परिषदको कर्मचारीको पद, दरबन्दी, श्रेणी, न्यूनतम योग्यता** : (१) परिषदमा रहने कर्मचारीको पद, दरबन्दी, श्रेणी र सो पदको लागि आवश्यक पर्ने न्यूनतम योग्यता अनुसूची- ८ मा तोकिए बमोजिम हुनेछ ।

(२) उपनियम (१) मा लेखिएदेखि बाहेक परिषदको लागि नयाँ पद सिर्जना गर्न आवश्यक देखिएमा रजिष्ट्रारले कार्यबोझ, त्यसबाट पर्न आउने आर्थिक दायित्व र त्यसको स्रोत समेत खुलाई परिषदमा पेश गर्नुपर्नेछ ।

(३) उपनियम (२) बमोजिम नयाँ पद सिर्जनाको लागि पेश हुन आएमा परिषदले कार्यबोझ र पर्न आउने आर्थिक दायित्व समेतलाई विचार गरी प्द सिर्जना गर्नुपर्ने लागेमा दरबन्दी स्वीकृतिको लागि स्वास्थ्य मन्त्रालय समक्ष अनुरोध गर्नुपर्नेछ ।

(४) उपनियम (३) बमोजिम परिषदले गरेको अनुरोध मुताविक स्वास्थ्य मन्त्रालयबाट दरबन्दी स्वीकृत भै आएमा स्वीकृत भै आए बमोजिमको दरबन्दी परिषदले सिर्जना गर्नेछ।

(५) पदपूर्ति समितिले सेवामा रहने प्रत्येक पदको कार्य विवरण बनाउनेछ र त्यस्तो कार्य विवरणमा सम्बन्धित पदको काम, कर्तव्य, अधिकार र उत्तरदायित्व समेत उल्लेख गरिनेछ।

६.२ **पदपूर्ति समिति** : (१) परिषदको सेवाको रिक्त पदमा कर्मचारी नियुक्ति गर्ने प्रयोजनको लागि लोक सेवा आयोगबाट स्वीकृत भएको सिद्धान्त र तरिका अपनाई उपयुक्त उम्मेदवारको छनौट गरी अध्यक्ष समक्ष निजको नाम सिफारिश गर्न देहाय बमोजिमको पदपूर्ति समिति गठन हुनेछ -

(क) अध्यक्षले तोकेको परिषदको सदस्य - अध्यक्ष

(ख) अध्यक्षले तोकेको परिषदको सदस्य - सदस्य

(ग) रजिष्ट्रार - सदस्य-सचिव

(२) पदपूर्ति समितिले पूर्ति गरिनुपर्ने पदसँग सम्बन्धित विशेषज्ञलाई आवश्यकतानुसार विज्ञको रुपमा बैठकमा आमन्त्रण गर्न सक्नेछ।

(३) पदपूर्ति समितिको बैठक सम्बन्धी सम्पूर्ण कार्यविधि सोही समितिले निर्धारण गरे बमोजिम हुनेछ।

(४) पदपूर्ति समितिका अध्यक्ष, सदस्य, सदस्य-सचिव र विज्ञले पाउने बैठक भत्ता अनुसूची- ७ मा तोकिए बमोजिम हुनेछ।

६.३ **करारमा नियुक्त गर्ने** : (१) पदपूर्ति समितिबाट नयाँ नियुक्तिको लागि सिफारिश भएका उम्मेदवारलाई सिफारिश भएको मितिले पन्ध्र दिनभित्र एक पटकमा बढीमा दुई वर्षको लागि करारमा नियुक्ति दिइनेछ र यस्तो नियुक्तिको सूचना छिटो साधनद्वारा सम्बन्धित उम्मेदवारलाई दिनुपर्नेछ।

(२) उपनियम (१) बमोजिमको नियुक्तिको निर्णय अध्यक्षले गर्नेछ।

(३) परिषदलाई आवश्यक भएमा उपनियम (१) बमोजिम नियुक्त कर्मचारीको म्याद रजिष्ट्रारको सिफारिशमा एक पटकमा बढीमा दुई वर्षमा नबढ्ने गरी परिषदले थप गर्न सक्नेछ।

(४) उपनियम (१) बमोजिम नियुक्त कर्मचारीको सेवाको शर्त, सुविधा र सेवाको अवधि करारनामामा उल्लेख भएबमोजिम हुनेछ।

६.४ **<u>पद नभई नियुक्त गर्न नहुने</u>** : पद नभई कुनै पनि व्यक्तिलाई परिषदको सेवामा नियुक्त गर्नु हुँदैन । त्यसरी नियुक्त गरेको पाइएमा त्यस्तो कर्मचारीले परिषदको सेवामा रहँदा पाएको तलब भत्ता लगायतका अन्य सुविधा नियुक्त गर्ने अधिकारीबाट असूल उपर गरिनेछ।

## परिच्छेद - ७

## <u>विविध</u>

७.१. **<u>परिषदको छाप</u>** : (१) परिषदको छाप अनुसूची- ९ मा उल्लेख भए बमोजिमको ढाँचा र नक्साको हुनेछ।

(२) उपनियम (१) बमोजिमको परिषदको छाप परिषदले तोकेको आकारमा बनाइनेछ र त्यसमा प्रयोग हुने रंग परिषदले तोके बमोजिम हुनेछ।

(३) परिषदको तर्फबाट जारी गरिने जुनसुकै कागजपत्रमा परिषदको छाप लगाइनेछ।

७.२ **<u>व्यवसाय छोडेमा वा ठेगाना बदलेमा सूचना गर्नुपर्ने</u>** : दर्तावाला कुनै फार्मेसी व्यवसायीले फार्मेसी व्यवसाय छोडेमा वा ठेगाना परिवर्तन गरेमा निजले एक महिनाभित्र रजिष्ट्रारलाई लिखित रुपमा सूचना गर्नुपर्नेछ।

७.३ **<u>नाम दर्ताले अभिलेख अध्यावधिक राख्नुपर्ने</u>** : (१) यस नियमावली बमोजिम परिषदमा नाम दर्ता गरिएको प्रत्येक फार्मेसी व्यवसायीको नाम रजिष्ट्रारले अध्यावधिक रुपमा राख्नु पर्नेछ।

(२) उपनियम (१) बमोजिम अद्यावधिक रुपमा राखिएको प्रत्येक फार्मेसी व्यवसायीको नाम प्रत्येक तीन वर्षमा परिषदले सार्वजनिक रुपमा प्रकाशन गर्नेछ।

७.४ **<u>नाम दर्ताको अभिलेख अद्यावधिक राख्न विवरण उपलब्ध गराउनुपर्ने</u>** : (१) दर्तावाला प्रत्येक फार्मेसी व्यवसायीले नाम दर्ताको अभिलेख अध्यावधिक गर्ने प्रयोजनको लागि परिषदले तोकेबमोजिमको ढाँचामा अध्यावधिक विवरण फाराम भरी परिषदलाई उपलब्ध गराउनुपर्नेछ।

(२) उपनियम (१) बमोजिम अध्यावधिक विवरण फाराम उपलब्ध नगराउने फार्मेसी व्यवसायीको नाम अध्यावधिक सूचीमा समावेश गरिने छैन ।

७.५ **अध्यावधिक दस्तुर** : परिषदको दर्ता किताबमा नाम दर्ता भएको फार्मेसी व्यवसायीले नियम ७.३ बमोजिम अध्यावधिक विवरण पठाउँदा अनुसूची-१ मा तोके बमोजिमको अध्यावधिक दस्तुर समेत संलग्न गरी पठाउनुपर्नेछ ।

७.६ **नियमावलीको व्याख्या** : यो नियमावलीको व्याख्या गर्ने अधिकार परिषदमा निहित हुनेछ ।

७.७ **बाधा अड्काउ फुकाउने अधिकार** : ऐन वा यस नियमावलीले निर्दिष्ट नगरेको विषयमा वा यसो गर्ने भनी स्पष्ट नभएको विषयमा अप्रत्याशित रुपमा कुनै कठिनाई आई परेमा ऐन र यस नियमावलीमा उल्लेखित व्यवस्थाको विपरीत नहुने गरी परिषदले उचित व्यवस्था गरी बाधा अड्काउ फुकाउन सक्नेछ ।

७.८ **अधिकार प्रत्यायोजन** : (१) ऐन तथा यस नियमावली बमोजिम परिषदलाई प्राप्त अधिकारमध्ये केही अधिकार परिषदले विषय समिति, अध्यक्ष, सदस्य रजिष्ट्रार र परिषदको अधिकृत कर्मचारीलाई प्रत्यायोजन गर्न सक्नेछ ।

(२) ऐन तथा यस नियमावली बमोजिम अध्यक्ष र रजिष्ट्रारलाई प्राप्त अधिकारमध्ये केही अधिकार निजहरुले क्रमशः रजिष्ट्रार र परिषदको अधिकृत कर्मचारीलाई प्रत्यायोजन गर्न सक्नेछन् ।

७.९ **नीति, निर्देशिका, कार्यविधि, शर्त, मापदण्ड तथा पूर्वाधार निर्धारण गर्न सक्ने** : (१) ऐन र यस नियमावलीको उद्देश्य प्राप्तिका लागि परिषदले देहायका विषयमा आवश्यक नीति, निर्देशिका, कार्यविधि, शर्त मापदण्ड तथा पूर्वाधार निर्धाण गरी जारी गर्न सक्नेछ -

(क) व्यवस्थित, वैज्ञानिक एवं सुचारु रुपले फार्मेसी व्यवसायको सञ्चालन,

(ख) शिक्षण संस्थाको स्थापना र सञ्चालनको लागि आवश्यक मापदण्ड तथा पूर्वाधार,

(ग) शिक्षण संस्थाको मान्यताको आधार तथा सो संस्थाको पाठ्यक्रम, भर्नाका शर्त, परीक्षा प्रणाली तथा तत्सम्बन्धी अन्य

आवश्यक शर्त तथा पूर्वाधार एवं सो को मूल्याङ्कन तथा पुनरावलोकन,

(घ) फार्मेसी व्यवसाय गर्नको लागि आवश्यक योग्यता र फार्मेसी व्यवसायीको कार्यसीमा निर्धारण,

(ङ) अन्य आवश्यक विषय ।

(२) उपनियम (१) बमोजिम जारी गरिएको नीति, निर्देशिका, कार्यविधि, शर्त, मापदण्ड तथा पूर्वाधार पालना गर्नु गराउनु सम्बन्धित सबैको कर्तव्य हुनेछ ।

**७.१० <u>अनुसूचीमा संशोधन गर्ने अधिकार</u>** : परिषदले यस नियमावलीको अनुसूचीमा आवश्यकता अनुसार थपघट वा हेरफेर गर्न सक्नेछ ।

## अनुसूची - १

**(नियम २.१ को उपनियम (१), नियम २.४ को उपनियम (५) र नियम ७.५ सँग सम्बन्धित)**

## नाम दर्ता, दती नवीकरण र अध्यावधिकरण दस्तुर

(क) नाम दर्ता दस्तुर :

| | | |
|---|---|---|
| १. | फर्मासिष्टको लागि | रु. २,०००।- |
| २. | फार्मेसी सहायकको लागि | रु. १,०००।- |
| ३. | गैर नेपाली फर्मासिष्टको लागि | रु. १५,०००।- |
| ४. | गैर नेपाली फार्मेसी सहायकको लागि | रु. १०,०००।- |

(ख) नवीकरण दस्तुर :

| | | |
|---|---|---|
| १. | गैर नेपाली फर्मासिष्टको लागि | रु. ७,५००।- |
| २. | गैर नेपाली फार्मेसी सहायकको लागि | रु. ५,०००।- |

(ग) नाम दर्ता अध्यावधिकरण दस्तुर :

| | | |
|---|---|---|
| १. | फर्मासिष्टको लागि | रु. ५००।- |
| २. | फार्मेसी सहायकको लागि | रु. ३००।- |

# अनुसूची - २

**(नियम २.२ को उपनियम (१) सँग सम्बन्धित)**

## नाम दर्ताको लागि दिने दरखास्त फाराम

हालसालै खिचिएको दरखास्तवालाको दुबै कान देखिने पासपोर्ट साइजको श्याम श्वेत फोटो

श्री नेपाल फार्मेसी परिषद,
काठमाडौं ।

नेपाल फार्मेसी परिषदको दर्ता किताबमा मेरो नाम फर्मासिष्ट/फार्मेसी सहायकको रुपमा दर्ता गराउन नेपाल फार्मेसी परिषद ऐन, २०५७ को दफा १२ र नेपाल फार्मेसी परिषद नियमावली, २०५९ को नियम २.२ बमोजिम देहायको विवरण खोली यो दरखास्त पेश गरेको छु ।

१. पूरा नाम र थर : ..........................................................................................

NAME : ..........................................................................................

(IN BLOCK LETTER)

२. पिताको नाम : ..........................................................................................

३. विवाहित भए पति वा पत्नीको नाम : ..........................................................................

४. नागरिकता : ..........................................................................................

५. स्थायी ठेगाना : अञ्चल .................................. जिल्ला ..................................

गाउँ विकास समिति/नगरपालिका ..............................................

वडा नं. ................. टोल : ......................गाउँ........................

टेलिफोन नं. .............................. फ्याक्स नं. ..........................

इमेल ..........................................................................

६. स्थायी ठेगाना : अञ्चल .................................. जिल्ला ..................................

गाउँ विकास समिति/नगरपालिका ..............................................

वडा नं. ................ टोल : ....................गाउँ.........................

टेलिफोन नं. .............................. फ्याक्स नं. ..........................

इमेल ..........................................................................

७. पत्र व्यवहार गर्ने ठेगाना : ......................................................................

.........................................................................................................

८. हाल कुनै संस्थामा कार्यरत भए सो संस्थाको नाम : ............................................

.........................................................................................................

ठेगाना : ....................................................................................

.........................................................................................................

पोष्ट बक्स नं.: ........................................ टेलिफोन न. : ...........................

फ्याक्स नं. .................................. इमेल : ..............................................

९. प्रस्तावित काम गर्ने संस्थाको नाम (गैर नेपाली नागरिक फार्मेसी व्यवसायीको हकमा मात्र) : ..........................................................................................

ठेगाना : ....................................................................................

पोष्ट बक्स नं. : ...........................................................................

फ्याक्स नं. : ...............................................................................

इमेल : .......................................................................................

१०. यसभन्दा अघि कुनै व्यवसायी परिषद वा सो सरहको संस्थामा नाम दर्ता भएको भए, -

त्यस्तो परिषद वा संस्थाको नाम : ...................................................................

ठेगाना : ....................................................................................

पोष्ट बक्स नं. : ...........................................................................

टेलिफोन नं. : ..............................................................................

फ्याक्स नं. : ...............................................................................

इमेल : .......................................................................................

११. शैक्षिक योग्यता सम्बन्धी विवरण :

(क) सामान्य

| क्र.सं. | प्राप्त गरेको शैक्षिक योग्यता | अध्ययन संस्थान | साल | श्रेणी | कैफियत |
|---|---|---|---|---|---|
| १. | | | | | |
| २. | | | | | |
| ३. | | | | | |

(ख) व्यावसायिक

| क्र.सं. | प्राप्त गरेको शैक्षिक योग्यता | अध्ययन संस्थान | साल | श्रेणी | कैफियत |
|---|---|---|---|---|---|
| १. | | | | | |
| २. | | | | | |
| ३. | | | | | |

१२. तालिम सम्बन्धी विवरण :

| क्र.सं. | उपाधिको नाम | तालिम दिने संस्थाको नाम | साल | श्रेणी | कैफियत |
|---|---|---|---|---|---|
| १. | | | | | |
| २. | | | | | |
| ३. | | | | | |

उपरोक्त बमोजिम लेखिएको विवरण ठीक साँचो छ, झुठा ठहरेमा कानुन बमोजिम सहुँला बुझाउँला ।

दरखास्तवालाको,-

दस्तखत : ..........................................

पूरा नाम, थर : ..................................

मिति : ............................................

द्रष्टव्य : दरखास्तवालाले दरखास्तसाथ हालसालै खिचिएको दुबै कान देखिने पासपोर्ट साइजको श्याम श्वेत फोटो तीन प्रति र नागरिकताको प्रमाणपत्र, दरखास्त फाराममा लेखिए बमोजिमको शैक्षिक योग्यता तथा तालिमको प्रमाणपत्रको सक्कल एवं श्री ५ को सरकारको सेवामा कार्यरत अधिकृत स्तरको कर्मचारीद्वारा प्रमाणित सो को दुई प्रति नक्कल समेत संलग्न गर्नुपर्नेछ ।

## अनुसूची - ३

**(नियम २.२ को उपनियम (२) सँग सम्बन्धित)**

## प्रतिज्ञापत्र

म श्री ............................................................ ले नेपाल फार्मेसी परिषद ऐन, २०५७ , नेपाल फार्मेसीव नियमावली, २०५९ तथा प्रचलित अन्य कानुनको अधिनमा रही फर्मासिष्ट/फार्मेसी सहायकको हैसियतले आफूले पालन गर्नुपर्ने सबै काम, कर्तव्य र व्यावसायिक आचरण इमान्दारीसाथ पालना गर्ने प्रतिज्ञा गर्दै यो प्रतिज्ञापत्र प्रस्तुत गरेको छु । मैले नेपाल फार्मेसी परिषद ऐन, नियमावली तथा अन्य प्रचलित कानुनले निर्दिष्ट गरेको फर्मासिष्ट/फार्मेसी सहायकको काम, कर्तव्य र व्यावसायिक आचरणको पालना नगरेमा कानुन बमोजिम कारवाही हुन मेरो मन्जुरी छ ।

दस्तखत : ............................................

नाम : .............................................

ठेगाना :............................................

मिति : .............................................

## अनुसूची - ४

**(नियम २.४ को उपनियम (१) सँग सम्बन्धित)**

## दर्ता किताब

दर्तावालाको फोटो

दर्ता नं. :

नाम :

स्थायी ठेगाना : अञ्चल .................................. जिल्ला ..........................................

गाउँ विकास समिति/नगरपालिका ......................................................

वडा नं. ................ टोल : .............................................................

गाउँ .........................................................................................

टेलिफोन नं. .............................. फ्याक्स नं. ....................................

इमेल ........................................................................................

अस्थायी ठेगाना : अञ्चल .................................. जिल्ला ..........................................

गाउँ विकास समिति/नगरपालिका ......................................................

वडा नं. ................ टोल : .............................................................

गाउँ .........................................................................................

टेलिफोन नं. .............................. फ्याक्स नं. ....................................

इमेल ........................................................................................

बाबुको नाम : ....................................................................................

कार्यरत संस्था र ठेगाना : ....................................................................

**शैक्षिक योग्यता सम्बन्धी विवरण**

सामान्य शैक्षिक योग्यता

| क्र.सं. | प्राप्त गरेको शैक्षिक योग्यता | अध्ययन संस्थान | साल | श्रेणी | कैफियत |
|---|---|---|---|---|---|
| १. | | | | | |
| २. | | | | | |

व्यावसायिक शैक्षिक योग्यता

| क्र.सं. | प्राप्त गरेको शैक्षिक योग्यता | अध्ययन संस्थान | साल | श्रेणी | कैफियत |
|---|---|---|---|---|---|
| १. | | | | | |
| २. | | | | | |

तालिम

| क्र.सं. | उपाधिको नाम | तालिम दिने संस्थाको नाम | साल | श्रेणी | कैफियत |
|---|---|---|---|---|---|
| १. | | | | | |
| २. | | | | | |
| ३. | | | | | |

प्रमाणपत्र बाहकको दस्तखत :

परिषदको निर्णय मिति : दर्ता मिति :

विवरण भर्नेको दस्तखत : रजिष्ट्रारको दस्तखत :

विवरण थप तथा परिवर्तन आदि (नाम दर्ता अध्यावधिक गर्दा भर्ने)

| मिति | विवरण | विवरण भर्नेको दस्तखत | रजिष्ट्रारको दस्तखत | कैफियत |
|---|---|---|---|---|
| | | | | |
| | | | | |
| | | | | |
| | | | | |
| | | | | |
| | | | | |

## अनुसूची - ५

**(नियम २.४ को उपनियम (१) सँग सम्बन्धित)**

## नेपाल फार्मेसी परिषद

| |
|---|
| नाम दर्ता प्रमाणपत्र पाउनेको फोटो |

**नाम दर्ता प्रमाणपत्र**

................................ अञ्चल ................................ जिल्ला ........................ नगरपालिका/गा.वि.स. वडा नं. ........... .................................. बस्ने वर्ष ........... को श्री ............................................................ ले नेपाल फार्मेसी परिषद ऐन, २०५७ तथा नेपाल फार्मेसी परिषद नियमावली, २०५९ बमोजिम नेपाल फार्मेसी परिषदको दर्ता किताबमा नाम दर्ता गर्नको लागि निर्धारित योग्यता पूरा गरेकोले नेपाल फार्मेसी परिषदको मिति ................................ को निर्णय अनुसार नेपाल फार्मेसी परिषदको दर्ता किताबमा निजको नाम फर्मासिष्ट/फार्मेसी सहायकको रुपमा नाम दर्ता गरी यो प्रमाणपत्र दिइएको छ।

दर्ता नम्बर :

नाम दर्ता प्रमाणपत्र जारी भएको मिति :

परिषदको छाप :

दस्तखत : ................................

नाम : ....................................

रजिष्ट्रार

द्रष्टव्य : गैर नेपाली फमर्मासिष्ट/फार्मेसी सहायकको हकमा नाम दर्ता नवीकरण नभएमा यो प्रमाणपत्र जारी भएको मितिले दुई वर्षसम्मको लागि मात्र मान्य हुनेछ र निजको नाम दर्ता नवीकरण गर्नुपरेमाा निजले यो प्रमाणपत्रको म्याद समाप्त हुनुभन्दा कम्तीमा पैंतीस दिन अगावै नेपाल फार्मेसी परिषदमा दरखास्त दिनुपर्नेछ।

(नाम दर्ता प्रमाणपत्रको पछाडिको पृष्ठमा लेखिने व्यहोरा)

## नाम दर्ता नवीकरणको विवरण

(गैर नेपाली फर्मासिष्ट/फार्मेसी सहायकको हकमा मात्र)

| नाम दर्ता नवीकरणको अवधि | | नाम दर्ता नवीकरण गर्ने परिषदको निर्णय मिति | रजिष्ट्रारको दस्तखत | परिषदको छाप | कैफियत |
|---|---|---|---|---|---|
| मिति देखि | मिति सम्म | | | | |
| | | | | | |
| | | | | | |
| | | | | | |
| | | | | | |
| | | | | | |
| | | | | | |
| | | | | | |
| | | | | | |
| | | | | | |
| | | | | | |
| | | | | | |
| | | | | | |
| | | | | | |
| | | | | | |
| | | | | | |
| | | | | | |

## अनुसूची - ६

**(नियम २.५ सँग सम्बन्धित)**

**विषय : <u>नाम दर्ता नभएको जानकारी ।</u>**

श्री ......................................

......................................

तपाईंले नेपाल फार्मेसी परिषदको दर्ता किताबमा नाम दर्ता गराउनको लागि मिति .................................. मा यस परिषदमा दिनुभएको निवेदन उपर कारबाही हुँदा देहाय बमोजिमको कारणले तपाईंको नाम परिषदको दर्ता किताबमा दर्ता नगर्ने निर्णय परिषदबाट मिति ................................ मा भएको व्यहोरा जानकारी गराउँछु ।

**<u>नाम दर्ता नगर्नु पर्ने कारण</u>**

(क)

(ख)

(ग)

दस्तखत : ...................................

मिति : .......................................

नाम : .......................................

रजिष्ट्रार

## अनुसूची - ७

**(नियम ५.३, नियम ५.४ र नियम ६.२ को उपनियम (४) सँग सम्बन्धित)**

## <u>बैठक भत्ता र रजिष्ट्रारको पारिश्रमिक</u>

(क) बैठक भत्ता (प्रति बैठक)

| | | |
|---|---|---|
| १. | परिषदको अध्यक्ष | - रु. ५००।- |
| २. | परिषदको सदस्य, रजिष्ट्रार र विज्ञ | - रु. ४००।- |
| ३. | विषय समितिको अध्यक्ष | - रु. ४००।- |
| ४. | विषय समितिको सदस्य, सदस्य-सचिव र विज्ञ | - रु. ३००।- |
| ५. | पदपूर्ति समितिको अध्यक्ष | - रु. ४००।- |
| ६. | पदपूर्ति समितिको सदस्य, सदस्य-सचिव र विज्ञ | - रु. ३००।- |

(ख) रजिष्ट्रारको पारिश्रमिक (प्रति महिना)

१. श्री ५ को सरकारको सेवामा बहाल रहेको कर्मचारी रजिष्ट्रार तोकिएमा - रु.३००।-

२. श्री ५ को सरकारको सेवामा बहाल नरहेको कर्मचारी रजिष्ट्रारमा नियुक्त भएमा - नेपाल स्वास्थ्य सेवा ऐन, २०५३ बमोजिमको कम्तीमा अधिकृत आठौं तहको कर्मचारीले पाउने तलव र भत्ता पाउने भए भत्ता समेत बराबरको रकम ।

## अनुसूची - ८

(नियम ६.२ सँग सम्बन्धित)

## सेवामा रहने श्रेणी, पदनाम, दरबन्दी संख्या र न्यूनतम योग्यता

| सि.नं. | पदनाम | श्रेणी | दरबन्दी संख्या | न्यूनतम योग्यता |
|---|---|---|---|---|
| १. | प्रशासकीय अधिकृत | अधिकृत तृतीय | १ (एक) | मानविकी तथा सामाजिक शास्त्र वा वाणिज्य वा विज्ञान तथा प्रविधि वा कानुन वा शिक्षा शास्त्रमा कम्तीमा स्नातक वा सो सरहको उपाधि हासिल गरेको । |
| २. | कार्यालय सहायक | सहायक प्रथम श्रेणी | १ (एक) | मानविकी तथा सामाजिक शास्त्र वा वाणिज्य वा विज्ञान तथा प्रविधि वा कानुन वा शिक्षा शास्त्रमा कम्तीमा प्रमाणपत्र तह वा सो सरह उत्तीर्ण गरेको र कम्प्यूटर सञ्चालन सम्बन्धी कम्तीमा ६ महिनाको तालिम पाएको वा कम्प्यूटर डिप्लोमा गरेको । |
| ३. | सहलेखापाल | सहायक द्वितीय श्रेणी | १ (एक) | एस.एल.सी. वा सो सरह उत्तीर्ण गरेको । |
| ४. | परिचर | श्रेणी विहिन | १ (एक) | साधारण लेखपढ गर्न जान्ने । |

## अनुसूची - ९

**(नियम ७.१ सँग सम्बन्धित)**

## परिषदको छाप

**विवरण** : एउटा वर्तुलभित्र केही सानो अर्को वर्तुल, उक्त वर्तुलहरु बीचको माथिल्लो भागमा "नेपाल फार्मेसी परिषद" र तल्लो भागमा "Nepal Pharmacy Council" शब्द तथा बायाँतर्फ औषधिको चक्की र दायाँतर्फ क्याप्सुल एवं भित्री वर्तुलको बीचमा स्थित बेरिएको दुईओटा सर्पको मुखतर्फको मध्यमा Rx अंकित मोटर/पेसल भई सो मोटर/पेसललाई लठ्ठीले अड्याइएको तथा बेरिएको पिठतर्फ बाहिर अर्थात भित्री वर्तुलको बायाँतर्फ २०५८ र दायाँतर्फ 2001 उल्लिखित हुनेछ।